ཀྭིཡེར་ཡུཐ་གྲུཔ

क्वयेर युथ ग्रुप

# Queer Youth Group

كْوِيير يُتهٔ گرُپ

नेपाल सम्बत ११४० तछ्ला १, २०७७ जेठ १०, 23 May 2020

# यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषता बारे अवधारणागत बुझाई




यो लोकप्रिय चित्रांकणलाई लैङ्गिक रोटी (जेण्डर ब्रेड) चित्रांकण भनिन्छ ।

---

Queer Youth Group is a loose network of young queer people voicing for rights of queer people. We began in 2018, and are meanwhile under process of registration as not-for-profit.

**queeryouthgroup.nepal@gmail.com**

# आधारभूत अवधारणा

यौन विशेषता (Sex characteristics) : यौन विशेषता भन्नाले मानिसको यौनाङ्ग वा प्रजनन अङ्गबाट छुट्टिने भेद हो । यौन विशेषता शारीरिकी भिन्नता हो ।

लैङ्गिकता (Gender) : पुरुषत्व देखि नारीत्वको अनुभूती, अभिव्यक्तिमा हुने भावनात्मक, मनोवैज्ञानिक, मानसिक वा सामाजिक भिन्नतालाई लैङ्गिकता भनिन्छ । अर्को भाषामा पुरुषत्व र नारीत्वसँग सम्बन्धित सामाजिक विशेषताहरूको विशाल दायरालाई लैङ्गिकता भनिन्छ ।

लैङ्गिक पहिचान (Gender identity) : लैङ्गिक पहिचान भन्नाले हरेक व्यक्तिको भित्री मन वा अन्तरात्माबाट लैङ्गिकता सम्बन्धी आएको व्यक्तिगत अनुभूती र अनुभव एवं भित्री मनबाट आएको आन्तरिक बोध र नीजले त्यसलाई गर्ने प्रस्तुतीकरण तथा आफ्नो लैङ्गिकता चिनाउन प्रयोग गर्ने शब्दवाली हो । हरेक व्यक्तिको भित्री मन वा अन्तरात्माबाट लैङ्गिकता सम्बन्धी आएको अनुभूति र व्यक्तिगत अनुभव हुँदछ । आफू महिला हो कि, पुरुष हो कि, दुबै हो कि, कुनै मिश्रणमा हो कि वा कुनै पनि होइन कि भन्ने सम्बन्धी भित्री मनबाट आउने भावना उसको लैङ्गिक पहिचान हो । हरेक व्यक्तिले आफ्नो सामाजिक परिवेश र भाषाको आधारमा विभिन्न शब्दको छनोट गरी आफ्नो लैङ्गिक पहिचानको परिचय दिन वा पहिचान गराउन शब्दवालीको प्रयोग गर्दछ ।

लैङ्गिक प्रस्तुतीकरण (Gender expression) : कुनै पनि व्यक्तिमा आफ्नो लैङ्गिकता अनुरूप रहेको व्यवहार, आचरण र आन्तरिक एवं बाह्य अभिव्यक्तिलाई लैङ्गिक प्रस्तुतीकरण भनिन्छ । लैङ्गिकतासँग सम्बन्धित कुनै प्रकारको अभिव्यक्ति, हाउभाउ, आचरण वा चालढाल नीजको लैङ्गिक प्रस्तुतीकरण हो ।

यौनिकता (Sexuality) : कुनै व्यक्तिको यौन तथा कामुक (sexual and erotic) अनुभव तथा प्रस्तुतीकरण (experience and expression) को व्यापकतालाई यौनिकता भनिन्छ । मानव यौनिकताको दायरा विशाल हुन्छ । यस अन्तर्गत कुनै पनि व्यक्तिको यौनिक र कामुक व्यवहार र भावनाहरूलाई समेट्छ । मानव यौनिकतामा जैविक, कामुक, शारीरिक, भावनात्मक, समाजिक र आध्यात्मिक भावना तथा व्यवहारहरू संलग्न हुन्छ । यौनिकताको विशालता बारे चर्चा गर्नुपर्दा, कुनै व्यक्तिलाई कस्तो प्रकारको यौन चाहना छ, नीजले कस्तो प्रकारको यौन स्वप्न देख्छ, नीजलाई कुन लैङ्गिकताका व्यक्तिहरू मनपर्छ, नीजले आफ्ना यी भावनाहरूलाई कसरी प्रस्तुत गर्छ भन्ने जस्ता विविध विषयहरू यसमा समावेश हुन्छ । कोही व्यक्तिलाई योनी मौथुन, कोही व्यक्तिलाई गुदद्वार मैथुन, कोही व्यक्तिलाई मुख मैथुन, कुन बढी मनपर्छ, कि सबै उत्तिकै मनपर्छ, कि केही कत्ति मनपर्दैन जस्ता विषयहरू यौनिकताका पाटाहरू हुन् । यसै गरी केकस्ता यौन गतिविधिहरूले व्यक्तिलाई चरम उत्कर्षमा पुर्याउँछ, कुन आशनमा यौन सम्पर्क व्यक्तिलाई मनपर्छ वा मनपर्दैन लगायतका विषयहरू पनि यौनिकताकै पाटाहरू हुन् । यौनिकतामा यसरी दृश्यक रूपमै यौनिक वा कामुक विषयहरू मात्रै पर्दैनन् कि व्यक्तिले लगाउने लिप्स्टिकको रङ्ग देखि लिएर, हिँड्ने र प्रस्तुत हुने दिनानुदिनका गतिविधिहरू पनि पर्न सक्छ । उदाहरणका लागि कुनै एउटा मानिस बाटोमा सरासर हिँड्दै छ र उसको अगाडी उसले मनपराउने मान्छे बसीरहेको छ । उसलाई देख्न बित्तिकै ती व्यक्तिले उस प्रति सकरात्मक छाप छोड्न आफ्नो हिँडाई परिवर्तन गर्दछ भने ती व्यक्तिमा जुन भावनाहरू उत्पन्न भएर हिँडाइ परिवर्तन गरे, त्यसको सम्बन्ध उसको प्रणयात्मक वा यौनिक चाहनासँग सम्बन्धित छ भने यो भावना नीजको यौनिकताको एउटा पाटो हो । मानव यौनिकताको विशालता दृश्यक भेदयोग्य विषयहरू मात्र होइन, दिनहुँ जीवनका स-साना विषयहरू पनि यसकै पाटो हुन सक्छ । हरेक मानिसको यौनिकता भिन्न हुन्छ र सबै मानिसहरूको यौनिकताको अनुभव र अभिव्यक्ति एकै नाशको हुँदैन ।

यौन अभिमुखिकरण (Sexual orientation) : कुनै व्यक्ति कुन लैङ्गिकताका अरु व्यक्तिहरू तर्फ यौन तथा प्रणयात्मक (sexual and romantic) आकर्षण महसुस गर्दछ भन्ने आधारमा नीजको यौनिक पहिचानलाई यौन अभिमुखिकरण भनिन्छ । आफू भन्दा फरक लैङ्गिकताका मानिस प्रति हुने यौन तथा प्रण्यात्मक आकर्षण, आफू जस्तै / उस्तै लैङ्गिकताका मानिस प्रति हुने यौन तथा प्रण्यात्मक आकर्षण, दुई भिन्न लैङ्गिकताका मानिस प्रति हुने यौन तथा प्रण्यात्मक आकर्षण, यौन तथा प्रणयात्मक आकर्षणको अनुभव नहुनु, इत्यादी यौन अभिमुखिकरण अन्तर्गत पर्दछ ।

यौन प्राथ्यात्मक अभिरूची (Sexual preference) : यौन कृयाकलाप वा कुनै प्रणयात्मक, प्रेम वा यौन सम्बन्धमा रहँदा कस्तो प्रकारको मानिस खोजिन्छ वा मानिसका के गुणहरूले आकर्षित बनाउँछ भन्ने विषयलाई यौन प्राथ्यात्मक अभिरूची भनिन्छ । उदाहरणका निम्ति : कुनै एक २० वर्षे पुरुषलाई केवल ४० वर्ष नाघेका महिलाहरू बढी मनपर्छ वा सम्बन्धका निम्ति उनीहरू नै उसको पहिलो छनोट हुन्छ भने त्यो उसको यौन प्राथ्यात्मक अभिरूची हो । कुनै व्यक्तिलाई अर्को व्यक्तिसँग भावनात्मक सम्बन्ध प्रगाढ महसुस नभए सम्म यौन आकर्षण महसुस हुँदैन भने त्यो उसको यौन प्राथ्यात्मक अभिरूची हो ।

***

# यौन विशेषता

- यौन गुणसुत्रको संख्या र प्रकार – हरेक मानिसका कोषाणुमा भएको डि.एन.ए. र प्रोटिनको संयुक्त संरचनालाई गुणसुत्र (chromosomes) भनिन्छ । मानिसको हरेक कोषाणुमा २३ जोडी गुणसुत्र हुन्छ । उक्त २३ जोडी गुणसुत्रको २३ औँ जोडीलाई यौन गुणसुत्र भनिन्छ ।
- प्रजनन ग्रन्थी – निषेचनका निम्ति प्रयोग हुने कोषाणु र यौन हर्मोन उत्पादन गर्ने ग्रन्थी (gonads)

- आन्तरिक प्रजनन अङ्ग – जस्तै पाठेघर
- बाह्य यौन अङ्ग
- यौन हर्मोन – टेस्टेस्टेरोन, एस्ट्रोजन, प्रोजेस्टेरोन

यौन विशेषतालाई परम्परागत हिसाबले यसरी छुट्याइएको पाइन्छ :

पुलिङ्गी (Male sex) : जो व्यक्तिहरूको पुलिङ्गी प्रजनन प्रणाली हुन्छ, बाह्य यौनाङ्ग शिश्न हुन्छ र २३औँ गूणसूत्र XY हुने गर्दछ, उनीहरू पुलिङ्गी हुन् ।

स्त्रीलिङ्गी (Female sex) : जो व्यक्तिहरूको स्त्रीलिङ्गी प्रजनन प्रणाली हुन्छ, बाह्य यौनाङ्ग योनी हुन्छ र २३औँ गूणसूत्र XX हुने गर्दछ, उनीहरू स्त्रीलिङ्गी हुन् ।

यसरी पुलिङ्गी र स्त्रीलिङ्गी शरीरहरूको परिभाषाहरूमा अटाउने ( fit हुने ) किसिमको यौन विशेषताका मानिसहरूलाई आन्तर्लिङ्गी [ आन्तरिक + लिङ्ग + ई ] Endosex people पनि भनिन्छ ।

## अन्तरलिङ्गी (Intersex)

पुलिङ्गी वा स्त्रीलिङ्गी शरीरका परम्परागत धारणाहरूमा नअटाउने यौन विशेषताहरू (यौनाङ्ग, प्रजनन ग्रन्थी तथा गुणसुत्रको ढाँचा) भएका व्यक्तिहरूलाई अन्तरलिङ्गी व्यक्ति भनिन्छ । अन्तरलिङ्गी एउटा छाता शब्द हो जसले शारीरिक विविधताको व्यापकतालाई व्याख्या गर्दछ । केही अवस्थाहरूमा अन्तरलिङ्गी गुणहरू जन्मन बित्तिकै देखिन्छ भने केही अन्तरलिङ्गी गुणहरू किशोरावस्थामा मात्र देखिन्छ । केही अन्तरलिङ्गी गुणसुत्र विविधता भने शारीरिक रूपमा देखा नपर्न पनि सक्छ ।

अन्तरलिङ्गी व्यक्तिहरूको हाल सम्म ४० वटा भन्दा बढी विविधता पत्ता लागिएको छ । यो विविधताका केही उदाहरणहरू दिन पर्दा, दुबै यौनाङ्ग भएका व्यक्तिहरू, अस्पष्ट यौनाङ्ग भएका व्यक्तिहरू, बाह्य यौनाङ्ग शिश्न र भित्री अङ्ग पाठेघर हुने, बाह्य यौनाङ्ग योनी र भित्री अण्डकोष हुने, इत्यादी हुन् ।




बाह्य अङ्ग शिश्न, आन्तरिक अङ्ग पाठेघर भएको व्यक्ति, तस्वीर :Daily Mail






दोहोरो यौनाङ्ग भएका व्यक्ति, तस्वीर :Home Oint




तस्वीर :Jonathan Marcus, विकिपिडिया



























विभिन्न अन्तरलिङ्गी विविधताहरू, तस्वीर :Agents of Ishq

*यौन विशेषतालाई जनाउन प्रयोग गरिने केही शब्दवालीहरू*

(क) "जन्मँदा यौनाङ्गको आधारमा इङ्गित गरिएको लिंग (Sex assigned at birth)" भन्नाले सामाजिक मूल्य मान्यता अनुसार कुनै बच्चा जन्मन बित्तिकै नीजको बाहिरी यौन अङ्ग वा विशेषताको आधारमा नीजलाई केटा वा केटी भनेर गरिने निर्धारण भनी सम्झनुपर्छ ।

(ख) "जन्मँदा पुलिङ्गी इङ्गित गरिएका व्यक्ति (Assigned male at birth)" भन्नाले कुनै बच्चा जन्मन बित्तिकै नीजको बाहिरी यौनाङ्ग लिंग भएको आधारमा नीजलाई केटा / पुरुष भनी गरिएको निर्धारण भनी सम्झनु पर्छ ।

(ग) "जन्मँदा स्त्रीलिङ्गी इङ्गित गरिएका व्यक्ति (Assigned female at birth)" भन्नाले कुनै बच्चा जन्मन बित्तिकै नीजको बाहिरी यौनाङ्ग योनी भएको आधारमा नीजलाई केटी / महिला भनी गरिएको निर्धारण भनी सम्झनु पर्छ ।

***

# लैङ्गिकता, लैङ्गिक पहिचान, र लैङ्गिक प्रस्तुतीकरण

- लैङ्गिकता सम्बन्धी कसैको व्यक्तिगत अनुभूती
- कुनै व्यक्तिको लैङ्गिक अनुभव
- अक्सर व्यक्तिको हाउभाउ वा अभिव्यक्तिबाट प्रस्तुत हुने
- व्यक्तिले आफूलाई पहिचान गर्ने

## महिला र पुरुषको द्वयसंख्या (बाइनेरी)

जन्मँदा यौनाङ्गको आधारमा इङ्गित गरिएको लिंगसँग मेल खाने लैङ्गिक पहिचान भएका व्यक्तिहरूलाई जनाउन प्रयोग गरिने शब्द 'त्याचलैङ्गिक' हो । कुनै पनि व्यक्ति जसको जन्मँदा यौनाङ्गको आधारमा पुलिङ्गी इङ्गित गरिएको र लैङ्गिक पहिचान पुरुष हो भने ऊ त्याचलैङ्गिक पुरुष ( cisgender man / cisman ) र कुनै पनि व्यक्ति जसको जन्मँदा यौनाङ्गको आधारमा स्त्रीलिङ्गी इङ्गित गरिएको र लैङ्गिक पहिचान महिला हो भने ऊ त्याचलैङ्गिक महिला ( cisgender woman / ciswoman ) भनिन्छ ।

जन्मँदा यौनाङ्गको आधारमा इङ्गित गरिएको लिंगसँग मेल नखाने लैङ्गिक पहिचान भएका व्यक्तिहरूलाई जनाउन प्रयोग गरिने शब्द 'पारलैङ्गिक' हो । कुनै पनि व्यक्ति जसको जन्मँदा यौनाङ्गको आधारमा स्त्रीलिङ्गी इङ्गित गरिएको र लैङ्गिक पहिचान पुरुष हो भने ऊ पारलैङ्गिक पुरुष ( transgender man / trans man ) र कुनै पनि व्यक्ति जसको जन्मँदा यौनाङ्गको आधारमा पुलिङ्गी इङ्गित गरिएको र लैङ्गिक पहिचान महिला हो भने ऊ पारलैङ्गिक महिला ( transgender woman / trans woman ) भनिन्छ ।

## गैर-द्वयसांखिक लैङ्गिक पहिचान (Non-binary gender identities) :

पुरुष वा महिलाको परिभाषामा नअटाउने र पुरुष वा महिलाको अभिव्यक्ति अन्तर्गत नपर्ने लैङ्गिक पहिचानहरूलाई गैर-द्वयसांखिक लैङ्गिक पहिचान भनिन्छ । पारम्पारिक लैङ्गिक भिन्नता सँग सम्बन्धित नरहेका र महिला वा पुरुष लैङ्गिकता दुबै नरहेको, दुबै रहेको वा मिश्रण जनाउने लैङ्गिक पहिचानहरूको विविधतलाई गैर-द्वयसांखिक भनिन्छ । पुरुष र महिलाको लैङ्गिकता गिन्तिमा दुई संख्या हुन्छ र यो दुई संख्यालाई द्वयसांखिक ( binary ) भनिनाले यसमा नपर्नेलाई गैर-द्वयसांखिक ( non-binary )

भनिएको हो। गैर-द्वयसांखिक लैङ्गिक पहिचानलाई लैङ्गिक क्वयेर ( genderqueer ) पनि भन्न सकिन्छ।

अलैङ्गिक (Agender) : लैङ्गिकता नभएका व्यक्तिहरू वा आफूलाई कुनै पनि लैङ्गिकतासँग सम्बन्ध नभएको भनी पहिचान गर्ने व्यक्तिहरूलाई अलैङ्गिक भनिन्छ। जो व्यक्ति आफूलाई न पुरुष भएको अनुभव गर्छन् न महिला भएको वा पुरुष पनि होइन र महिला पनि होइन भनेर चिनाउने व्यक्तिहरू अलैङ्गिक हुन्।

दुईलैङ्गिक (Bigender) : आफूलाई महिला र पुरुष दुबै हुँ भनी पहिचान गर्ने व्यक्तिलाई दुईलैङ्गिक भनिन्छ। दुईलैङ्गिक व्यक्तिहरूमा पुरुष र महिला दुबैको स्वभाव हुन्छ तर जब यी भावनाहरू पालैपिलो आउने गर्छन् अर्थात् पुरुषको भावना हुँदा पुरुषत्व झल्कने र महिलाको भावना हुँदा नारीत्व झल्कने।

मिश्रितलैङ्गिक (Androgyne) : पुरुष र महिला दुबैको मिश्रित स्वभाव र भावना भएका व्यक्तिलाई मिश्रितलैङ्गिक भनिन्छ। मिश्रितलैङ्गिक व्यक्तिहरूमा पुरुष र महिला स्वभाव तथा अभिव्यक्तिको अस्पष्ट मिश्रण हुन्छ। उनीहरूमा एकैपटक यी दुबै भावनाको मिश्रित स्वरूपले अभिव्यक्ति हुन्छ।

तरल लैङ्गिक व्यक्ति (Gender Fluid) : पुरुषत्व देखि नारीत्व बीचमा रहने तरल स्वभावको लैङ्गिकता भएका व्यक्तिहरूलाई तरल लैङ्गिक भनिन्छ । तरल लैङ्गिक व्यक्तिहरू कहिले आफूलाई एकदमै पुरुष जस्तै अनुभव गर्छन्, कहिले एकदमै महिला जस्तो अनुभव गर्छन् वा कहिले दुबै जस्तो अनुभव गर्छन् र उनीहरूको लैङ्गिकता तरल रहन्छ। लैङ्गिकता सम्बन्धी उनीहरूको अनुभव स्थिर हुँदैन र यो अनुभव बदलिरहन्छ।

लैङ्गिक गैर-अनुरूपी व्यक्ति (Gender non-conforming) : आफूलाई लैङ्गिकताको कुनै परिभाषा अनुरूप नठान्ने र पुरुषत्व र नारीत्वको परम्परागत परिभाषामा आफ्नो लैङ्गिक प्रस्तुतीकरण नअटाउने व्यक्तिहरूलाई लैङ्गिक गैर-अनुरूपी व्यक्ति भनिन्छ।

अर्धलैङ्गिक (Demigender) : ती व्यक्तिहरू जो आधि रूपमा एउटा लैङ्गिकता सँग सम्बन्ध राख्छन्, र आधि रूपमा भने तरल लैङ्गिकताका हुन्छन् । अर्धमहिला (Demiwoman) : आधि रूपमा महिलाको पहिचान भएपनि, आधि रूपमा भने लैङ्गिक तरलता राख्ने व्यक्ति, आफूलाई महिलाकै रूपमा हेरेपनि अर्धहद सम्म तरल लैङ्गिकता भएका व्यक्ति । अर्धपुरुष (Demiman) : आधि रूपमा पुरुषको पहिचान भएपनि, आधि रूपमा भने लैङ्गिक तरलता राख्ने व्यक्ति, आफूलाई पुरुषकै रूपमा हेरेपनि अर्धहद सम्म तरल लैङ्गिकता भएका व्यक्ति ।

“गैर-द्वयसांखिक” शब्दावलीलाई छोटकरीमा “गद” पनि भन्ने गरिएको छ । संयुक्त शब्दको सुरुको अक्षरको अकार स्वरूपलाई प्रयोग गरिएको हो । अङ्ग्रेजीमा पनि Non-binary को छोटकरी स्वरूप NB हो ।

## तेस्रोलिङ्गी (Third gender) :

दक्षिण एसियाली हिन्दू र मुश्लीम संस्कृति समाजमा आफूलाई महिला वा पुरुषको परिभाषामा नराख्ने आफ्नो छुट्टै समाज, संस्कार, रीतिरिवाज र रहन सहन भएको विभिन्न समुदायहरू छन् । सामाजिक मूल्य मान्यता अनुसार तेस्रोलिङ्गी व्यक्तिहरूलाई अलौकिक मानिन्छ र उनीहरूले दिएको आशिर्वाद र श्राप लाग्दछ भन्ने मान्यता समेत रहेको र उनीहरू कुनै सुखद अवशर जस्तै विवाह, नवजन्म शिशु, इत्यादीमा नाच गान गर्ने, आशिर्वाद दिने परम्परागत पेशा पनि गर्दछन् । कतिपय तेस्रोलिङ्गी समुदायहरूको लामो इतिहास नै छ, उनीहरूको छुट्टै स्थानमा समुदायगत बसोबास हुन्छ र आफ्नो समुदायमा कोही भित्रन चाहेमा, समुदायमा भित्री सकेपछी, समुदायमा कसैको मृत्यु हुँदा बखतका चलन, परम्परा र रीतिरिवाज र कतिपय अवस्थामा समुदायको आफ्नै छुट्टै भाषा वा भाषिका समेत हुने गर्दछ । दक्षिण एसियामा यस्ता अनेकौं समुदायहरू छन् र ती समुदायको आफ्नै सामाजिक व्यवस्था र प्रणालीहरू हुन्छ ।

यसलाई लैङ्गिक समुदाय ( gender community ) भनिन्छ । प्रायः कुनै पनि समाज लैङ्गिकताको हिसाबले छुटिँदैन । हरेक समाजमा सबै लैङ्गिकताका व्यक्तिहरू हुन्छन् । विश्वका विभिन्न देशहरूमा मूलधारको समाजमा लैङ्गिकताका कारण अपहेलना, विभेद र त्यस समाजमा बसी नसक्नु अवस्था आएको हुनाले एकासमयमा समानुभव भएका मानिसहरू मूलधारको समाजबाट छुट्टै समाज बनाएर बस्न गएका थिए, जान्छन् वा जानेछन् , र त्यस्ता समाजको पनि आफ्नै छुट्टै रीतिरीवाज र मूल्य मान्यता हुन सक्छ, जसलाई लैङ्गिक समुदाय भनिन्छ । उक्त समुदायको नियम अन्तर्गत निश्चित लैङ्गिकताका व्यक्तिहरू मात्र स्वीकार गरिन्छ । भारतमा विशेष गरी विविध लैङ्गिक पहिचान भएका व्यक्तिहरू समाजबाट अपहेलित भएको हुनाले आफ्नै छुट्टै लैङ्गिक समुदायहरू बनाएका छन् जस्तै हिजडा, पैवया, खुसरा, इत्यादी, यी समाजहरूको आ-आफ्नै छुट्टा छुट्टै नियम र रीतिथिति छन् र जस्तै हिजडा समुदायको मानिसले आफूलाई अन्य नाम पैवया, खुसरा भनेर भन्दैनन् वा पैवयाले आफूलाई हिजडा, खुसरा भन्दैनन् ।

लैङ्गिक समुदायको अर्को उदाहरण दिनु पर्दा, यसै पुरुषहरूले अत्यन्तै अत्याचार गरेको हुनाले केन्याका महिलाहरूले उमोजा भन्ने छुट्टै गाउँ नै बनाए जुन महिलाहरूका निम्ति मात्र हो ।

दक्षिण एसियामा हेर्दा यी तेस्रोलिङ्गी समुदायहरू हिजडा, किन्नर, मंगलामुखी, पावैया, ख्वाजासिरा, खुस्रा, खसुआ, अरवानी, इत्यादी हुन्छन् भने नेपालमा मेटी, कोथी, घाँडे, मौगियाह, मैंबाबु, फुलुमुलु, फोलोक मोलोक, इत्यादी हुन्छन् । भारतमा हिज्रा फारसी भन्ने छुट्टै भाषा नै प्रचलनमा छ ।

तेस्रोलिङ्गी व्यक्तिहरूले आफूलाई महिला पनि मान्दैन, पुरुष पनि मान्दैन । यो विशेषतः दक्षिण एसियामा हिन्दु धर्म र इश्लामीको प्रभाव र आस्थामा रहेको लैङ्गिक पहिचान हो ।

*इतिहासको कुनै कालखण्डमा सामाजिक लैङ्गिक परिभाषा अनुरूप लैङ्गिक प्रस्तुतीकरण र अनुभव नभएका व्यक्तिहरूलाई समाजमा बस्न गाह्रो हुने वा सामाजिक वहिष्कार समेत हुने वा आफू कुण्ठित भएर बाँच्न बाध्य भएकाले उनीहरूले मूलधार*

*समाज भन्दा ताढा आफ्नो छुट्टै समाजमा बस्न गएकाले आफ्नो छुट्टै संस्कृति, रीतिरिवाज, भाषिका र व्यवस्था समेत विकास भयो । यो अहिलेको बदलिँदो सामाजिक परिवेशमा सबैका निम्ति सान्दर्भिक छैन । सबै गैर- त्याचलैङ्गिक व्यक्तिहरू यी समाजका हिस्सा हुन जाँदैनन् र त्यस्ता रहनसहन अपनाउँदैनन् । तसर्थ तेस्रोलिङ्गी शब्दले सबै गैर- त्याचलैङ्गिक व्यक्तिहरूलाई समेट्दैन । यो परम्परागत मूल्य मान्यता अनुसार बनेको समाज हो भने अहिलेको परिस्थिमा सबैलाई अनुकूल वा सान्दर्भिक छैन । तेस्रोलिङ्गी भनेको सबै गैर- त्याचलैङ्गिक व्यक्तिहरूलाई समेट्ने छाता शब्द होइन ।*

## अन्तरलिङ्गी व्यक्तिहरूको लैङ्गिक पहिचान (Gender identities of intersex people) :

अन्तरलिङ्गी हुनु एउटा यौन विशेषता हो । अन्तरलिङ्गी व्यक्तिहरूको पनि आ-आफ्नै लैङ्गिक पहिचान हुन्छ । जन्मँदा यौनाङ्गको आधारमा पुलिङ्गी इङ्गित गरिएका सबै व्यक्तिहरू पुरुषै हुन्छन् भन्ने आवश्यक नरहेको वा जन्मँदा यौनाङ्गको आधारमा स्त्रीलिङ्गी इङ्गित गरिएका सबै व्यक्तिहरू महिलै हुन्छन् भन्ने आवश्यक नरहेको जस्तै अन्तरलिङ्गी यौन विशेषताका व्यक्तिहरूको पनि लैङ्गिक पहिचान विविध हुन्छ । अन्तरलिङ्गी व्यक्तिहरूको लैङ्गिक पहिचान महिला, पुरुष वा गैर-द्वयसांखिक जे पनि हुन सक्छ । त्यसै गरी अन्तरलिङ्गी यौन विशेषतका व्यक्तिहरूको लैङ्गिक अनुभव विभिन्न किसिमको हुन सक्छ । कतिपय अन्तरलिङ्गी विविधताहरू जन्मँदै देखिने हुन सक्छ, जस्तै दुबै यौनाङ्ग हुनु वा अस्पष्ट यौनाङ्ग हुनु । तर कतिपय अन्तरलिङ्गी विविधताहरू किशोरावस्थामा मात्र देखिने वा शारीरिक रूपमा दृश्यक हिसाबले नदेखिने पनि हुन सक्छ । कतिपय अभिभावकहरूलाई अन्तरलिङ्गी बच्चाहरू कसरी हुर्काउने भन्ने अन्योलता समेत रहिजान सक्छ भने कतिपय अन्तरलिङ्गी व्यक्तिहरूलाई समाज वा आफ्नो अभिभावकको इच्छा चाहना अनुसार पुरुष वा महिलाको रूपमा हुर्काइएको हुन्छ । उक्त समाजिक हुर्काइको लैङ्गिकता नै उनीहरूको स्वःअनुभूतीको लैङ्गिकता हुन्छ

भने अन्तरलिङ्गी यौन विशेषताका व्यक्तिहरूले आफूलाई त्याचलैङ्गिक (Cisgender) भन्न सक्छन् र त्यस सामाजिक हुर्काइको लैङ्गिकता भन्दा फरक उनीहरूको स्वःअनुभूतीको लैङ्गिकता हुन्छ भने अन्तरलिङ्गी यौन विशेषताका व्यक्तिहरूले आफूलाई पारलैङ्गिक (Transgender) पनि भन्न सक्छन् ।

***

## लैङ्गिक प्रस्तुतीकरण

लैङ्गिक प्रस्तुतीकरण भन्नाले आफ्नो लैङ्गिकताको हाउभावात्मक अभिव्यक्ति हो। यो लैङ्गिक पहिचानसँग कसरी फरक हुन्छ भन्दा, एउटै लैङ्गिक पहिचान हुने व्यक्तिहरूले आफूलाई एउटै नाशमा प्रस्तुत गरिरहेका हुँदैनन् । आफूलाई महिला भनेर लैङ्गिक पहिचान राख्ने व्यक्तिहरूको पनि भिन्न भिन्न लैङ्गिक प्रस्तुतीकरण हुन सक्छ । जस्तै: कुनै महिला फेमे महिला हुन सक्छन्, जो परम्परागत नारीत्वात्मक प्रस्तुतीकरण झल्काउँछन् । कोही महिला परम्परागत रूपले पुरुषात्मक प्रस्तुतीकरण झलाउने गर्छन्, जस्तै टमब्वाइ स्टाइल मनपराउनेहरू । दुबै खाले फरक प्रस्तुतीकरण गरेपनि लैङ्गिक पहिचान त महिला नै हो ।

ड्र्याएग (Drag ) : परम्परागत रूपमा महिला भनिएको प्रवृत्तिको पहिरन अतिरंजित र भद्दा ढङ्गले लगाउने पुरुषहरू वा परम्परागत रूपमा पुरुष भनिएको प्रवृत्तिको पहिरन अतिरंजित र भद्दा ढङ्गले लगाउने महिलाहरू । यो उनीहरूको लैङ्गिक पहिचान होइन, केवल प्रस्तुतीकरण मात्र हो । ती महिलाहरू जो भद्दा ढङ्गले मनोरञ्जनात्मक अभ्यासका निम्ति पुरुषको पहिरण धारण गर्दछ उनीहरूलाई नाट्यगुरु राजा वा ड्राएग कीङ (Drag King) भनिन्छ भने ती ती पुरुषहरू जो भद्दा ढङ्गले मनोरञ्जनात्मक अभ्यासका निम्ति महिलाको पहिरण धारण गर्दछ उनीहरूलाई नाट्यगुरु रानी वा ड्राएग क्वीन (Drag Queen) भनिन्छ ।

शहर्याउनिक पुरुष (Meterosexual man) : आफ्नो रूप रङ्ग, देखावट र सौन्दर्यको अति खयाल राख्ने पुरुषहरू, परम्परागत रूपमा महिलाले जसरी आफ्नो सौदर्यको ध्यान राख्छ भनिने गरिन्छ, सोही जस्तै आफ्नो सौन्दर्यमा ध्यान दिने पुरुषहरू ।

माएस्क (Masc.) : पुरुषत्व झल्कने प्रवृत्ति भएका महिलाहरू

फेम् (Femme) : नारीत्व झल्कने प्रवृत्ति भएका पुरुषहरू

माएस्क महिलाहरू आफूमा पुरुषत्व झल्कने हाउभाउ वा प्रवृत्ति रहेको व्यक्ति भएपनि महिला नै भनेर पहिचान गर्छन् वा फेम् पुरुषहरू आफूमा नारीत्व झल्कने हाउभाउ वा प्रवृत्ति रहेको व्यक्ति भएपनि पुरुष नै भनेर पहिचान गर्छन् । यसलाई धेरै व्यक्तिहरूले पारलैङ्गिक हुनु सँग अन्योल गरेर बुझ्ने गर्छन् । माएस्क हुनु वा फेम् हुनु केवल प्रस्तुतीकरणको विषय हो, लैङ्गिक पहिचान नै भने होइनन् । म्याएस्क महिलाहरू आफूलाई महिला नै भन्छन् र फेम् पुरुषहरू आफूलाई पुरुष नै भन्छन् । माएस्क महिलाहरूलाई कतै टमब्वाइ (Tomboy) पनि भन्ने गरिएको छ भने फेम् पुरुषहरूलाई एफेमिनेट (Effeminate) पनि भन्ने गरिएको छ । कतिपय व्यक्तिहरूले टमब्वाइ वा एफेमिनेट शब्दहरू अपमानजनक मान्ने गर्दछन् , त्यसैले माएस्क र फेम् शब्दहरू प्रयोग गर्नु उचित देखिन्छ ।

विषुपहिरणी (Cross-dresser) : कुनै पनि व्यक्ति जसले आफू भन्दा विपरीत लैङ्गिकताको पहिरन लगाउँछ र त्यसरी नै आफूलाई अभिव्यक्त गर्दछ । विषुपहिरणी व्यक्तिहरू आफूलाई विपरीत लैङ्गिकताको हुँ भन्ने अनुभव चाही गर्दैनन् । उनीहरू आफूलाई पुरुष नै भन्छन् र उनीहरू महिलाको पहिरनमा आफूलाई अभिव्यक्त गर्न रुचाउँछन् वा आफूलाई महिला नै भन्छन् र उनीहरू पुरुषको पहिरनमा आफूलाई अभिव्यक्त गर्न रुचाउँछन् । विषुपहिरणी भन्नाले कुनै एउटा कार्यक्रमको लागि वा कुनै एउटा विशेष अवसरमा विपरीत लैङ्गिकताको पहिरन लगाएर प्रस्तुत हुनुलाई भन्दैन । विषुपहिरणी व्यक्तिहरूका निम्ति यो आफ्नो लैङ्गिक प्रस्तुतीकरणको हिस्सा नै हुन्छ ।

***

# यौन अभिमुखिकरण

- कुनै पनि व्यक्तिको यौन तथा प्रणयात्मक आकर्षण कुन लैङ्गिकता तर्फ छ भन्ने विषयले निर्धारण गर्दछ
- किशोरावस्थामा आउने परिवर्तनहरूमा सब्बल अनुभव हुँदै जाने
- किशोरावस्था पूर्व पनि विभिन्न रूपमा अनुभव हुन सक्ने

विषमयौनिकता (Heterosexuality) : विपरीत वा फरक लैङ्गिकता भएका व्यक्ति तर्फ हुने आकर्षणलाई विषमयौनिकता भनिन्छ । विपरीत वा फरक लैङ्गिकता भएका व्यक्ति तर्फ आकर्षित हुने व्यक्तिलाई विषमयौनिक (heterosexual / straight) व्यक्ति भनिन्छ । कुनै महिलालाई पुरुष तर्फ यौनिक वा प्रणयात्मक आकर्षण छ भने उसलाई विषमयौनिक महिला भनिन्छ भने कुनै पुरुषलाई महिला तर्फ यौनिक वा प्रणयात्मक आकर्षण छ भने उसलाई विषमयौनिक पुरुष भनिन्छ । विषमयौनिकतामा पारलैङ्गिक महिला र पुरुष अनि अन्तरलिङ्गी महिला र पुरुष पनि समावेश हुन्छ ।

समयौनिकता (Homosexuality) : समान वा उस्तै लैङ्गिकता भएका व्यक्ति तर्फ हुने आकर्षणलाई समयौनिकता भनिन्छ । उस्तै वा समान लैङ्गिकता भएका व्यक्ति तर्फ आकर्षित हुने व्यक्तिलाई समयौनिक (homosexual) व्यक्ति भनिन्छ । कुनै महिलालाई महिला तर्फ यौनिक वा प्रणयात्मक आकर्षण छ भने उसलाई समयौनिक महिला (lesbian woman) भनिन्छ भने कुनै पुरुषलाई पुरुष तर्फ यौनिक वा प्रणयात्मक आकर्षण छ भने उसलाई सममयौनिक पुरुष (gay man) भनिन्छ । समयौनिकतामा पारलैङ्गिक महिला र पुरुष अनि अन्तरलिङ्गी महिला र पुरुष पनि समावेश हुन्छ ।

द्वियौनिकता (Bisexuality) : उस्तै र फरक दुईवटा लैङ्गिकता तर्फ हुने आकर्षणलाई द्वियौनिकता भनिन्छ । उस्तै र फरक दुईवटा लैङ्गिकता तर्फ आकर्षित हुने व्यक्तिलाई द्वियौनिक
(bisexual) व्यक्ति भनिन्छ । द्वियौनिकतामा पारलैङ्गिक महिला र पुरुष अनि अन्तरलिङ्गी महिला र पुरुष पनि समावेश हुन्छ ।

बहुयौनिकता (Polysexuality) : दुई भन्दा बढी लैङ्गिक पहिचानहरू तर्फ हुने आकर्षणलाई बहुयौनिकता भनिन्छ । उदाहरणका लागि : एक पुरुष जसलाई पारलैङ्गिक महिला, तरल लैङ्गिक व्यक्ति, लैङ्गिक क्वयेर र लैङ्गिक गैर-अनुरूपी व्यक्ति तर्फ आकर्षण हुन्छ । एक तरल लैङ्गिक व्यक्ति जसलाई त्याचलैङ्गिक पुरुष, लैङ्गिक क्वयेर र अरु तरल लैङ्गिक तर्फ अकार्षण हुन्छ ।

सर्वयौनिकता (Pansexuality) : सबै लैङ्गिकता तर्फ आकर्षण हुने वा कुनै व्यक्ति जसलाई यौन वा प्रणयात्मक आकर्षण महसुस हुन लैङ्गिक पहिचानले बाधा पुर्याउँदैन, त्यसलाई सर्वयौनिकता भनिन्छ । सर्वयौनिक व्यक्तिहरू जोसुकै मानिससँग पनि यौन र प्रणयात्मक आकर्षण महसुस गर्दछन् र कुनै निश्चित लैङ्गिकता तर्फ मात्र हुने भन्ने हुँदैन ।

द्रवयौनिकता / तरल यौनिकता (Sexual Fluidity) : यौन अभिमुखिकरण एवं यौनिकताका मामिलामा तरल भावनालाई द्रवयौनिकता भनिन्छ । कुनै एउटा निश्चित लैङ्गिकता तर्फ मात्र आकर्षित नहुने तर यो भावना तरल रहने, कहिले कुनै लैङ्गिकता(हरू) तर्फ आकर्षित भए कहिले कुनै लैङ्गिकता(हरू) तर्फ हुने, तरल यौन आकर्षण भएका व्यक्तिहरू द्रवयौनिक हुन् ।

अयौनिकता (Asexuality) : कुनै प्रकारका यौन आकर्षण महसुस नहुनु, कुनै प्रकारको यौन चाहना नहुनु वा अतिन्यून हुनु अयौनिकता हो। यसलाई ‘यौनिक-शून्य’ पनि भनिने गरिन्छ। ती व्यक्तिहरू कोही तर्फ यौनिक रूपमा आकर्षित हुँदैनन्, उनीहरूलाई अयौनिक भनिन्छ ।

खैर्याउनिकता (Graysexuality) : कुनै व्यक्तिको यौन अभिमुखिकरण यौन भावनायुक्त र अयौनिकताको बीचमा झुलिएको ग्रे-क्षेत्रलाई खर्याउनिकता भनिन्छ । खर्याउनिक व्यक्तिहरू पूर्ण रूपमा अयौनिक पनि महसुस गर्दैनन् र पूर्ण रूपमा कुनै सब्बल यौनाकर्षण पनि महसुस गर्दैनन् ।

## यौन अभिमुखिकरणलाई व्याख्या गर्न प्रयोग गर्न सकिने केही वैकल्पिक शब्दभण्डार :

पुरुष्याउनिक (Androsexual) : पुरुष तर्फ आकर्षित व्यक्ति

महिल्याउनिक (Gynesexual) : महिला तर्फ आकर्षित व्यक्ति

गदयौनिक (Skoiliosexual / Ceterosexual) : गैर-द्वयसांखिक लैङ्गिक पहिचान भएका व्यक्तिहरू तर्फ आकर्षित व्यक्ति

पाराकर्षित (Trans-attracted) : पारलैङ्गिक व्यक्ति तर्फ आकर्षित व्यक्ति

त्याचाकर्षित (Cis-attracted) : त्याचलैङ्गिक व्यक्ति तर्फ आकर्षित व्यक्ति

मिश्र्याउनिक (Annesexual) : मिश्रितलैङ्गिक व्यक्ति तर्फ यौन तथा प्रणयात्मक आकर्षण भएका व्यक्ति

अन्तर्गदयौनिक (Tercetrosexual) : अन्तरलिङ्गी गैर-द्वयसांखिक तर्फ यौन तथा प्रणयात्मक आकर्षण भएका व्यक्ति

अन्तर्पुरुष्याउनिक (Terandosexual) : अन्तरलिङ्गी पुरुष तर्फ यौन तथा प्रणयात्मक आकर्षण भएका व्यक्ति

अन्तर्महिल्याउनिक (Tergynesexual) : अन्तरलिङ्गी महिला तर्फ यौन तथा प्रणयात्मक आकर्षण भएका व्यक्ति

त्याचपुरुष्याउनिक (Cinesexual) : त्याचलैङ्गिक पुरुष तर्फ यौन र प्रणयात्मक आकर्षण भएका व्यक्ति

त्याचमहिल्याउनिक (Cindrosexual) : त्याचलैङ्गिक महिला तर्फ यौन र प्रणयात्मक आकर्षण भएका व्यक्ति

पारपुरुष्याउनिक (Trandrosexual) : पारलैङ्गिक पुरुष तर्फ यौन र प्रणयात्मक आकर्षण भएका व्यक्ति

पारमहिल्याउनिक (Tragysexual) : पारलैङ्गिक महिला तर्फ यौन र प्रणयात्मक आकर्षण भएका व्यक्ति

***

# यौन प्राथ्यात्मक अभिरूची

यौन प्राथ्यात्मिक अभिरूची भन्नाले व्यक्तिलाई यौनिक रूपमा कस्तो प्रकारको व्यक्ति मन पर्छ भन्ने आधार हो । केही समय अगाडी यौन अभिमुखिकरण नै यौन प्राथ्यात्मिक अभिरूची भन्ने मान्यता थियो भने अहिले ती दुई शब्दहरूमा पारिभाषिक भिन्नता स्पष्ट भएको छ। कुन लैङ्गिकताको व्यक्ति कुन कुन लैङ्गिकताको व्यक्तिसँग आकर्षित हुन्छ भन्ने आधारमा यौन अभिमुखिकरण हुन्छ । यस आधारमा हाम्रो समाजमा केवल महिला-पुरुष बीचको आकर्षणलाई मान्यता दिएको छ । यसै गरी आकर्षित भएको लैङ्गिकताको आधारमा यी विभिन्न यौन अभिमुखिकरणको अस्तित्व छ ।

यौन प्राथ्यात्मिक अभिरूची एउटा विशाल सागर हो। यो एकदमै विविध हुन्छ। उदाहरणका लागि एउटा विषमयौनिक पुरुष छ, ऊ पुरुष हो र महिला तर्फ आकर्षित छ। तर उसको यौन प्राथ्यात्मिक अभिरूची भने ४० वर्ष माथीको महिलाहरू हुन् । यी

यौन प्राथ्यात्मिक अभिरूचीको सूचीकरण गर्न त कठिन छ तर केही उदाहरणहरूका निम्ति :

(क) पूर्ण्याउनिक ( Allosexual ) : कुनै व्यक्तिसँग यौन आकर्षणको अनुभव हुने, भावनात्मक सम्बन्ध प्रगाढ अनावश्यक रहने ।

(ख) अर्धयौनिक ( Demisexual ) : कुनै व्यक्तिसँग भावनात्मक सम्बन्ध प्रगाढ नभएसम्म यौन आकर्षणको कुनै अनुभव नहुने व्यक्तिहरू अर्धयौनिक व्यक्तिहरू हुन् । जस्तै, एक समयमयौनिक महिला, एक महिला जसलाई महिला प्रति अकार्षण छ; ऊ कुनै अर्को महिला तर्फ अकार्षण हुन्छ भने पूर्ण्याउनिक अकार्षण अथवा उसलाई अर्को महिलासँग भावनात्मक सम्बन्ध प्रगाढ नभएसम्म यौन आकर्षणको कुनै अनुभव नहुने भए अर्धयौनिक आकर्षण भन्न सकिन्छ ।

(ग) निःसंगयौनिक (Aegosexual) : आफ्नो यौन उत्तेजनामा स्ववियोग हुनु; यौन स्वप्न तथा चाहनाहरूको संलग्नता हुन सक्छ, कामुक र यौन सामाग्रीबाट उत्तेजना आएपनि आफू नै कुनै यौन गतिविधिमा संलग्न हुन मनलाग्दैन र अरु व्यक्तिहरूको यौन सम्पर्क हेरी वा अरु व्यक्तिहरूको यौन सम्पर्क कल्पना गरी यौन सन्तुष्टि प्राप्त हुने व्यक्ति ।

(घ) निर्पारस्पयौनिक (Akoisexual / Lithosexual) : आकर्षणको अनुभव हुनु तर त्यो भावना पारस्पारिक नहोस् भनी चाहनु; आकर्षण वा मनपराउनु पारस्पारिक हुँदा आकर्षण हराउनु वा हुन छोड्नु; कुनै व्यक्ति प्रति आकर्षण महसुस हुनु तर त्यस व्यक्तिले पनि आकर्षित भएको जनाएमा आकर्षण हराउनु ।

यौन प्राथ्यात्मक अभिरूची सम्बन्धीको भाषा र शब्द पनि विकासकै क्रममा छ । यस लगायत पनि यौन प्राथ्यात्मक अभिरूची सम्बन्धीको भाषा र शब्द थुप्रै छन् ।

यौन अभिमुखिकरण र यौन प्राथ्यामक अभिरूची दुबै यौनिकताका दुई पाटोहरू हुन् तर यी एउटै भने होइनन् ।

कुनै व्यक्तिको यौन अभिमुखिकरणले उसलाई कुनै लैङ्गिकता तर्फ आकर्षण छ भन्ने विषयलाई देखाउँछ भने कुनै व्यक्तिको यौन प्राथ्यात्मक अभिरूची भन्नाले नीज आकर्षित हुने व्यक्तिका अरु विभिन्न गुणहरू केके हुन् भन्ने विषयलाई देखाउँछ ।

समाजले यस्तो शारीरिकीको मान्छे यस्तै लैङ्गिकताको हुनुपर्छ र यस्तै लैङ्गिकताको अर्को मान्छेसँग विवाह गर्नुपर्छ भन्ने मान्यताले समेट्न नसकेका विविध लैङ्गिक तथा यौनिक अनुभव र विविधताको बारे वकालत गर्दा, कुनै व्यक्तिको जस्तोसुकै नै शारीरिकी, लैङ्गिक पहिचान र प्रस्तुतीकरण र/वा यौन अभिमुखिकरण भएतापनि नीजलाई कुनै लाञ्छना रहित स्वतन्त्र जीवन बाँच्न पाउने अधिकारको कुरा गर्दा फेरी अर्के एक थान कुण्ठित बाकसहरू सृजना गर्नु गलत हुन्छ । लैङ्गिक तथा यौनिक पहिचानका विषय कसैलाई ट्याग लगाउनु वा फेरी अर्को कुण्ठित मान्यताहरू विकास गर्नु होइन ।

यौन अभिमुखिकरण र प्राथ्यात्मक अभिरूची सम्बन्धीका चलन्चल्तीमा धेरै देखिने शब्दहरू यी भएतापनि यतिमा मात्र सीमित भने छैन । यौनिकतालाई संकुचित ढङ्गले हेर्ने समाजबाट यौनिकता बारे खुलेर कुरा गर्ने समाज तर्फ लम्किँदा यस सम्बन्धीको भाषा र शब्दभण्डार पनि उत्तिकै नै सम्पन्न हुँदै आउनु स्वभाविक हो ।

***